# जग्गाको क्षेत्रफल लेख्ने पुरानो तरिका

पहाड तथा काठमाडौँ उपत्यकामा जग्गाको क्षेत्रफल लेखिने तरिका र भित्री मधेश तथा तराईमा जग्गाको क्षेत्रफल लेखिने तरिका अलग–अलग छन् । यी दुई भौगोलिक ठाउँहरूको क्षेत्रफल हिजोआज तेर्सो धर्को (–) तान्दै अङ्कमा लेखिन्छ । त्यसैले आज केवल यी दुई भौगोलिक क्षेत्रको जग्गाको इकाईको मात्र हेक्का राखे पुग्दछ । तर, जग्गाको क्षेत्रफल लेखिने पुरानो तरिका भने जटिल छ । दुबै क्षेत्रमा जग्गाको क्षेत्रफल लेखिने पुरानो तरिकामा केही आधारभूत अन्तर पनि छन् । तसर्थ यिनको अलग–अलग विवेचना यस परिच्छेदमा गरिएको छ ।

## पहाड र काठमाडौँ उपत्यका

### पहाड

पहाड तथा काठमाडौँ उपत्यकामा रोपनीमा जग्गा क्षेत्रफल लेखिन्छ । रोपनीका इकाईहरू निम्न बमोजिम छन्–

| | | | |
|---|---|---|---|
| रोपनी | आना | पैसा | दाम |

यसरी पहाड र काठमाडौँ उपत्यकामा लेखिने जग्गाका यी इकाईको अन्तरसम्बन्धको पनि चर्चा आवश्यक छ । रोपनीपछिको इकाइ आना हो । आनापछिको इकाइ पेसा हो । र, पैसापछिको दाम हो । पहाड तथा काठमाडौँ उपत्यकाका लागि रोपनी–आना–पैसा–दाम जग्गाका इकाइ हुन् । इकाइहरूको अन्तरसम्बन्ध निम्नानुसार हुन्छ–

| | | |
|---|---|---|
| ४ दामको १ पैसा | ४ पैसाको १ आना | १६ आनाको १ रोपनी |

हिजोआज पहाड तथा काठमाडौँ उपत्यकामा जग्गाको क्षत्रफल लेख्दा बीचमा तेर्सो धर्को (–) तान्दै अङ्कमा लेखिन्छ । जस्तो–१–२–३ भनि लेखियो भने १ रोपनी २ आना ३ पैसा भन्ने बुझिन्छ ।

यदी क्षेत्रफल २–०–१–२ लेखिएको छ भने ० ले त्यो इकाइ नरहेको जनाउँछ । यसको अर्थ २ रोपनी १ पैसा २ दाम हुन्छ । दोस्रो स्थान आनाको हो । त्यहाँ शून्य जनिए त्यो इकाइ नभएको अर्थ लाग्छ । तेस्रो स्थानमा शून्य जनिएको भए पैसा नभएको अर्थ लाग्दथ्यो ।

अर्को उदाहरणबाट हेरौँ । जग्गाको क्षेत्रफल ०–३–४ मात्र लेखियो भने यहाँ रोपनी छैन । दोस्रो स्थान आना छ–त्यो ३ आना भयो । त्यसपछि ४ पैसा भयो । दामको स्थान खाली भएबाट त्यहाँ केही छैन भन्ने बुझ्नुपर्दछ ।

तर, पहिले जग्गाको क्षेत्रफल यति सरल तरिकाले लेखिँदैनथ्यो । अहिले पनि पुराना मोठ, स्रेस्ता र पोता रसीदहरूमा पुरानै तरिकाले जग्गाको क्षेत्रफल अङ्कित भएको हुन्छ । मुद्दाहरूमा पनि त्यही पुरानो जग्गा मापदण्डका इकाइहरू प्रमाणका रूपमा संलग्न भएका हुन्छन् । तिनै पुराना जग्गाको क्षेत्रफल लेख्ने तरिकाको यहाँ विशेषरूपमा चर्चा गर्न लागिएको हो ।

पहाडको जग्गाको क्षेत्रफल लेख्ने तरिका पनि एउटै खालको थिएन । कतै यति हलको मेलो जाने भनेर लेखिन्थ्यो त कतै माटो मुरीको हिसाबले लेखिन्थ्यो । यस्तै गर्ने भन्ने कुनै निश्चितता थिएन । जुन ठाउँमा जसरी चलेर आयो त्यस्तै गरिन्थ्यो । धैरै ठाउँमा माटो मुरीको आधारमा जग्गाको क्षेत्रफल लेखिन्थ्यो ।

माटो मुरीका दृष्टीले जग्गाको इकाइ निम्नानुसार हुन्थे–

| | | | | |
|---|---|---|---|---|
| मुरी | पाथी | माना | मुठी | चिम्टी |

यसरी मुरीपछिको इकाइ पाथी हो । पाथीपछिको इकाइ माना हो । मानापछिको इकाइ मुठी हो । र, मुठीपछिको इकाइ चिम्टी हो । मुरी–पाथी–माना–मुठी–चिम्टी पहिले लेखिने जग्गाका इकाइ हुन् । ती जग्गका इकाइहरूको अन्तरसम्बन्ध निम्नानुसार हुन्छ–

| | | | |
|---|---|---|---|
| १० चिम्टीको १ मुठी | १० मुठीको १ माना | ८ मानाको १ पाथी | २० पाथीको १ मुरी |

क्षेत्रफल लेख्दा सबैभन्दा ठूलो इकाइ मुरीबाट शुरू गरिन्थ्यो । यदी मुरी छैन भने एउटा ठाडो धर्को (।) तानिन्थ्यो । उदाहरणको लागि ।३ लेखियो भने धर्कोबाट शुरू भएबाट यहाँ मुरी छैन भन्ने बुझिन्छ ।

मुरीपछिको इकाइ पाथी भएबाट ३ पाथी भन्ने बुझिन्छ । यदी दुई ठाडा धर्कापछि ३ (।।३) लेखियो भने अघिल्ला दुई इकाइ मुरी र पाथी छैनन्, तसर्थ तेस्रो इकाइ माना भएबाट ३ माना भन्ने अर्थ लाग्दछ ।

शुरूका ठाडा धर्कापछि अङ्क र अङ्कपछिका धर्काको भने अर्थ फरक हुन्छ । तिनले एकाइ छुट्याउने काम गर्दछन् । उदाहरणका लागि ।५।३ लेखिएको रहेछ भने ५ पाथी ३ माना भनेर बुझ्नुपर्दछ ।

तर, बीचमा दुईटा ठाडा धर्का आएमा भने बीचको इकाइ नरहेको बुझ्नुपर्छ । जस्तो ।५।।३ लेखिनुको तात्पर्य ५ पाथी ३ चिम्टी हो । अर्थात ० मुरी ५ पाथी ० माना ० मुठी ३ चिम्टीका रूपमा यसलाई बुझ्नुपर्दछ ।

यसरी नै १।।।४ लेखिएको रहेछ भने १ मुरी ० पाथी ० माना ० मुठी ४ चिम्टी अर्थात १ मुरी ४ चिम्टी भनेर बुझ्नुपर्दछ । कतै–कतै पहाडी क्षेत्रमा पनि काठमाडौँ उपत्यकाका सरह नै रोपनीमा क्षेत्रफल लेखिएको पनि पाइएको छ । खासगरी काठमाडौँ उपत्यकाका निकटका पहाडी जिल्लामा यसको प्रभाव परेको पाइएको छ ।

अब त सबै पहाडी क्षेत्रमा रोपनी–आना–पैसा–दाममै क्षेत्रफल लेखिन्छ ।

## काठमाडौँ उपत्यका

काठमाडौँ उपत्यकामा भने जग्गाको क्षेत्रफल रोपनी–आना–पैसा–दाममा हिजो पनि लेखिन्थ्यो, आज पनि लेखिन्छ । तर फरक के छ भने आज अङ्कमा मात्र क्षेत्रफल जनाइन्छ, पुरानो पद्धतिमा अङ्कका अतिरिक्त ठाडो धर्को (।) पनि प्रयोग गरिन्थ्यो । धर्कोको पनि समान अर्थ थिएन ।

शुरूमा आउने प्रति धर्कोले ४ आना जनाउँथ्यो भने पछि आउने प्रति धर्कोले १ पैसा वा १ दामको अर्थ दिन्थ्यो । कहिले त्यही धर्को इकाइ छुट्याउन पनि प्रयोग गरिन्थ्यो ।

उदाहरणका लागि–

५ ।३ ।।।२ लेखियो भने ५ रोपनी ७ आना ३ पैसा २ दाम हुन्छ ।

।।।२ ।३ लेखियो भने १४ आना २ पैसा ३ दाम हुन्छ ।

२ ।।२ ।।३ लेखियो भने २ रोपनी १० आना २ पैसा ३ दाम हुन्छ ।

५ ।० ।३ लेखियो भने ५ रोपनी ३ पैसा हुन्छ ।

१ ।० ।० ।२ लेखियो भने १ रोपनी २ दाम हुन्छ ।

अघिल्लो अङ्क नहुनुको तात्पर्य छैन भनेको हो । त्यसपछि १६ आना पुगेमा १ रोपनी नै हुने भयो, तसर्थ १५ आनासम्म इकाइमा लेख्न सकिने भयो । यसका लागि ।।।३ लेखे पुग्दथ्यो । कारण ।।। (३ धर्को) प्रत्येकले ४ आनालाई जनाउने भएबाट ४×३=१२ आना भयो त्यसमा ३ पनि जोड्नु पर्दा १५ आना भयो ।

४ पैसाको १ आना हुने भएबाट पैसा नभए रोपनी र आना पछि केही लेखिँदैनथ्यो । तर, पैसा पनि एकाइ भए आनाको अङ्क र पैसा छुट्याउन पर्दा प्रति धर्को (।) लाई १ मात्र मानिन्थ्यो । ४ पैसा भएपछि १ आना नै हुने भएबाट बढीमा ३ पैसासम्म जनाउन ३ धर्कासम्म तानिन्थे ।

यदी कुनै पोता रसीदमा ०।०।३ लेखिएको रहेछ भने यहाँ रोपनी छैन र दोस्रो इकाइ आना पनि छैन भन्ने कुरामा कुनै द्विविधा भएन । त्यसपछि आएको ।३ ले ७ पैसा भन्ने अर्थ लाग्दैन । कारण ४ पैसा भए त आना नै भइहाल्दछ । तसर्थ त्यो ठाडो धर्कोले १ अर्थात १ पैसा जनाउँछ । पछिल्लो ३ ले ३ दाम भन्ने अर्थ लाग्दछ ।

कुनै कुनै पोता रसीदमा  कुनै एकाइ नरहेको जनाउन तेर्सो धर्को (–) पनि तानिएको पनि पाइएको छ। उदाहरणको लागि ३–२।१ भनेको ३ रोपनी २ पैसा १ दाम भनिएको हो।

बीचमा धर्को नतानी केही बाङ्गो अङ्क लेख्ने चलन पनि पाइन्छ। उदाहरणका लागि ३√॥।३ भनेको ३ रोपनी २ आना ३ पैसा ३ दाम हो।

एउटा अर्को उदाहरणमा। √ ।२ भनेको ६ आना १ पैसा २ दाम हो।

यदी २। ℨ ।३ लेखिएको छ भने २ रोपनी ७ आना १ पैसा ३ दाम भनेर बुझ्नुपर्दछ।

कुनै अङ्क नै नलेखी केही ठाडा धर्का तानेर पनि जग्गाको क्षेत्रफल लेखिएको हुनसक्दछ। उदाहरणका लागि ॥।०। भनेको १२ आना १ दाम हो। यसैगरी २।√। ३ भनेको २ रोपनी ६ आना १ पैसा ३ दाम हो।

## तराई र भित्री मधेश

तराई तथा भित्री मधेशमा विगाहामा जग्गाको क्षेत्रफल लेखिन्छ। विगाहाका इकाइहरू निम्नबमोजिम हुन्छन्–

| | | |
|---|---|---|
| विगाहा | कट्ठा धुर | कनवा |

यसरी तराई र भित्री मधेशमा लेखिने जग्गाका मापदण्ड इकाइको अन्तरसम्बन्धको पनि चर्चा आवश्यक छ। विगाहाउपछिको इकाइ कट्ठा हो। कट्ठापछिको इकाइ धुर हो। र, धुरपछिको इकाइ कनवा हो। विगाहा–कट्ठा–धुर–कनवा तराई भित्री मधेशका जग्गाका इकाइ हुन्। इकाइहरूको अन्तरसम्बन्ध निम्नानुसार हुन्छ–

| | |
|---|---|
| ४ कनवाको १धुर  २० धुरको १ कट्ठा | २० कट्ठाको १ विगाहा |

हिजोआज जग्गाको क्षेत्रफल लेख्दा बीचमा तेर्सो धर्को (–) तान्दै अङ्कमा लेखिन्छ। जस्तो १–२–३ भनी लेखियो भने १ विगाहा २ कट्ठा ३ धुर भन्ने बुझिन्छ।

यदी क्षेत्रफल २–०–१–२ लेखिएको छ भने ० ले त्यो इकाइ नरहेको जनाउँछ। यसको अर्थ २ विगाहा, १ धुर, २ कनवा भन्ने बुझिन्छ। दोस्रो स्थान कट्ठाको हो। त्यहाँ शून्य जनिए त्यो इकाइ नभएको अर्थ लाग्दछ। तेस्रो स्थानमा शून्य जनिएको भए धुर नभएको अर्थ लाग्दथ्यो।

तर, पहिले जग्गाको क्षेत्रफल यति सरल तरिकाले लेखिँदैनथ्यो । अहिले पनि पुराना मोठ, स्नेस्ता, दुई नम्बर रसीद र अठसट्ठाहरूमा पुरानै तरिकाले जग्गाको क्षेत्रफल अङ्कित भएको हुन्छ । मुद्दाहरूमा पनि त्यही पुरानो जग्गा मापदण्डका इकाइहरू प्रमाणका रूपमा संलग्न भएका हुन्छन् । तिनै पुराना जग्गाको क्षेत्रफल लेख्ने तरिकाको यहाँ विशेषरूपमा चर्चा गर्न लागिएको हो ।

काठमाडौँ उपत्यकामा जग्गाको क्षेत्रफल लेख्दा अवलम्वन गरिने मापदण्ड सरह नै तराई र भित्री मधेशमा पनि प्रयोग गरिन्थ्यो ।  तर, एक ठाडो धर्कोको इकाइ भने यहाँ ५ हुन्छ । कनवा जनाउन तानिने धर्कोको अर्थ भने १ हुन्छ । कारण ४ कनवाको १ धुर भइहाल्दछ । यहाँ इकाइ छुट्याउन बिकारी (ऽ) पनि प्रयोग गरिन्छ । यसलाई डकार भन्ने पनि चलन छ ।

उदाहरणको लागि–

२० ।।।१ऽ  ।।४ लेखियो भने २० विगाह १६ कठ्ठा १४ धुर हुन्छ ।

४४ ।।।४ऽ  ।।२ लेखियो भने ४४ विगाह ९ कठ्ठा १७ धुर हुन्छ ।

१ऽ०ऽ१ लेखियो भने १ विगाह १ धुर हुन्छ ।

शून्यले त्यो इकाइ नरहेको अर्थ लाग्दछ ।

तराई र भित्री मधेशमा जग्गाको क्षेत्रफल लेख्ने अर्को तरिका पनि प्रचलनमा थियो । त्यो हो माथि केही बाङ्गो तेर्सो धर्को (⁄) तान्ने । यो तरिकाको चर्चा पनि हुन आवश्यक छ ।

माथि तेर्सो धर्को (⁄) ले १ अङ्क जनाउँछ । जस्तो–

१ ।।⁄ ।।३ ।। लेखियो भने १ विगाह ११ कठ्ठा १३ धुर हुन्छ ।

१ ऽ०।।२ लेखियो भने १ विगाह १२ धुर हुन्छ ।

४ ऽ३ ।।।१ लेखियो भने ४ विगाह ३ कठ्ठा १६ धुर हुन्छ ।

५ ।।।१ ।।।३ ।।। लेखियो भने ५ विगाह १६ कठ्ठा १८ धुर ३ कनवा हुन्छ ।

।१ ।।३ लेखियो भने ६ कठ्ठा १८ धुर हुन्छ ।

४ ।१ ।।।० ।। लेखियो भने ४ विगाह ६ कठ्ठा १५ धुर २ कनवा हुन्छ ।

ऽ२.२।। लेखियो भने २ कठ्ठा २$^{१}/_{२}$ धुर हुन्छ ।

।०। लेखियो भने  ५ कठ्ठा ५ धुर हुन्छ ।

ऽ२।। लेखियो भने २ कठ्ठा १० धुर हुन्छ ।

ऽ।० लेखियो भने ५ कट्ठा हुन्छ।

काठमाडौँ उपत्यकाकै जस्तो केही बाङ्गो अङ्क लेखेर जग्गाको क्षेत्रफल लेख्ने प्रचलन पनि प्रशस्तै थियो। यसको विषयमा पनि केही चर्चा आवश्यक छ।

बीचमा धर्को नतानी केही बाङ्गो लेख्ने चलन पनि पाइन्छ। उदाहरणका लागि ३√ ।।। ३ भनेको ३ विगाहा २ कट्ठा ३ धुर ३ कनवा हो।

एउटा अर्को उदाहरणमा। √।२ भनेको ७ कट्ठा १ धुर २ कनवा हो।

यसैगरी २।ℨ।३।। भनेको २ विगाहा ८ कट्ठा ८ धुर २ कनवा हो।

कुनै अङ्क नै नलेखी केही ठाडा धर्का तानेर पनि जग्गाको क्षेत्रफल लेखिएको हुन सक्दछ। उदाहरणका लागि ।।।।०। भनेको १५ कट्ठा १ धुर हो।

## रोपनी र विगाह

रोपनी र विगाह अलग–अलग भौगोलिक क्षेत्रमा लेखिने भएपनि कहिलेकाहीँ तिनको तुलना गर्नुपर्ने अवस्था पनि आउँछ। यसका लागि यी दुई मापन इकाइका बारेमा पनि यहाँ चर्चा आवश्यक छ।

१३–४–० (१३ रोपनी ४ आना) को १ विगाहा हुन्छ।

३–१–१ (३ रोपनी १ आना १ पैसा) को ५ कट्ठा हुन्छ।

## रोपनी र वर्गफीट

नापीको प्रयोजनका लागि फीट र मीटरको प्रयोग गरिन्छ। नक्सा ट्रायल चेक गर्दा वा अदालतबाटै प्रमाणस्वरूप गरिने नक्साका आधारमा पनि क्षेत्रफल निकाल्नु पर्ने अवस्था आउँछ। त्यसका लागि यहाँ फीट र क्षेत्रफलको सम्बन्धका बारेमा चर्चा पनि आवश्यक छ।

७४×७४ = ५४७६ वर्गफीटको १ रोपनी हुन्छ।

३७×३७ = १३६९ वर्गफीटको ४ आना हुन्छ।

३४२ वर्गफीटको १ आना हुन्छ।

८५ $^{१}/_{२}$ वर्गफीटको १ पैसा हुन्छ।

## विगाह र वर्गमीटर

२७०×२७० को ७२९०० वर्गफीटको १ विगाड हुन्छ।

३६४५ वर्गफीटको १ कठ्ठा हुन्छ।

१८२.२५ वर्गफीटको १ धुर हुन्छ।

## फीट र मीटर

३.३ फीटको १ मीटर हुन्छ।

**साभार**

हाम्रो कानूनी इतिहासका केही झाँकीहरू

प्रकाश वस्ती, २०६३